नेसं ११३७ यंलागा ११, विसं २०७४ भाद्र ३१ शनिवार यलया मंगलय् जूगु नेपालभाषा साहित्य नखः
ज्याइवलय् वाचन जूगु च्वसु

# नेपाभाषा साहित्य परिचय

प्रा. प्रेमशान्ति तुलाधर

**१ नेवार समुदाय**

विविध भाषाभाषी धर्म संस्कृतिको देश नेपालको एक महत्वपूर्ण समुदाय नेवार पनि हो। यस समुदाएको उत्पतिसम्बन्धी विद्वानहरूको भिन्नाभिन्नै राय भए पनि आजका नेवारहरू कुनै जात विशेष, रगत विशेषको होइनन् भन्ने कुरामा भने सबै सहमत छन्। इतिहास शिरोमणि बाबुराम आचार्यका भनाइअनुसार मंगोल्ल नश्लका नेवाङ/ नेवाहाङ /नेवाः/ भनिने मानिसहरू नै आजका नेवारहरूको आदिम पुर्खा हुन् भने, उनीहरूले बोल्ने भाषा नै आजको नेपालभाषाको प्राचीनतम अस्तित्व हो। बागमती नदीको वरपर रहेका उपत्यका नै नेवारहरूको आदिम स्थल हो (आचार्य, ने.सं. १०८९:३-१६)। पछि यहाँ विभिन्न समयमा बिभिन्न ठाउँबाट विविध धर्म, संस्कृति, नश्लका मानिसहरू ( गोपाली, किरात,लिच्छवि, बर्मन, तिरहुत, मल्ल, शाक्य, कोलिए आदि ) आइ बसे र कालान्तरमा यिनीहरू सबै यहाँका आदिवासीहरूसँग मिसिइ सबै नेवार बने। आज यिनीहरू बिचको साझा तत्व भनेको यिनीहरूले बोलिने भाषा हो। यसैले नेवारहरू भाषाबाट एकबद्ध भएका Linguistic Community हो ( श्रेष्ठ, वि.सं २०३८)।

**२ नेपालभाषा साहित्य**

नेपालभाषा तिब्बती बर्मी भाषा परिवार अन्तर्गत पर्ने लिखित परम्परा भएको छ वटा भाषामध्ये (नेपालभाषा, तिब्बति, बर्मेली, मणिपुरी, लिम्बू र लेप्चा) एक लामो साहित्यिक इतिहास बोकेको भाषा हो (कंसाकार, ने.सं ११०१:१)। प्राचीन अभिलेखहरूमा यस भाषालाई नेपालभाषा भनेर नै सम्वोधन गरिएको छ। यस भाषा साहित्यको इतिहासलाई तीन कालमा विभाजन गरी अध्ययन गर्ने चलन छ –प्राचीन, माध्यमिक, तथा आधुनिककाल।

**२.१ प्राचीन काल (इ.सं ८७९-१८४७)**

२.१.१ **प्राचीन अभिलेखमा नेपालभाषाका शब्दहरूको प्रयोग** : नेपालमा अभिलेखको परम्परा लिच्छवीकालदेखि शुरु भएको र उक्त अभिलेखहरूको भाषा मूलत संस्कृत भए पनि कतिपय नेपालभाषाका शब्दहरू (हालसम्म प्रचलित) पनि प्रयोग गरिएको हुनाले लिच्छविकाल अगाडि नै नेपालभाषा जमभाषाको रूपमा प्रचलनमा रहेको भाषावैज्ञानिकहरूको ठहर छ।

२.१.२ **अभिलेखमा नेपालभाषा** : बाऱ्हौं शदीमा आएर विभिन्न शिलापत्र, ताम्रपत्र, ताडपत्र आदि लेखनमा पनि नेपालभाषाको प्रयोग हुनथाल्यो। ललितपुरको उकुबहाल स्थित सन् १११५ को (श्री मणिधरजैव महाविहारको आर्यसंघको नियमसम्बन्धी) गोष्ठीपत्र नेपालभाषाको पहिलो लिखित पत्र हो भने उत्कीर्ण पत्रमा सन् ११७३ को साँखुको वज्रयोगिनी स्थित राजा रूद्रदेवको स्तम्भाभिलेख रहेको छ।

२.१.३ **वाङ्मय ग्रन्थमा नेपालभाषा** : चौधौं शताब्दी अर्थात् राजा जयस्थिति मल्लको शासनकालदेखि तत्कालिन आवश्यकता तथा शासकहरूको अभिरुचिअनुसार संस्कृतका प्रचलित ग्रन्थहरूलाई नेपालभाषाबाट टीका, अनुवाद गर्ने परम्पराको थालनी भयो। यस्ता ग्रन्थहरू सबै हस्तलिखितरूपमा छन्। तिनीहरूको प्रमुख विषय तथा नाम –

- चिकित्साशास्त्र : चिकित्सासम्बन्धी ग्रन्थहरूमध्ये -विचित्र कौटुक (सन् १३७३) १४३० हरमेखला- (सन् १३७४) १४३१औषध सर्वस्व वैद्यकम् आदि प्रमुख छन्।
- न्यायशास्त्र : सन् १३७९ मा लेखिएको नारद संहिता बाहेक अरू पनि न्यायशास्त्रसम्वन्धी सानातिना ग्रन्थहरू छन्। यस ग्रन्थलाई विश्वकै एक प्राचीन न्यायशास्त्रको पुस्तक मानिन्छ।
- शब्दकोश : सन् १३८० मा लेखिएको अमरकोश बाहेक १० वटा अन्य अमरकोशका टीकाहरू पनि फेला परेका छन्।
- इतिहास : इतिहाससम्बन्धी प्राचीन ग्रन्थहरूमध्ये सन् १३८८ तिर लेखेको गोपालराज वंशावली नेपालभाषाको पहिलो मौलिक ग्रन्थ रहेको छ।
- ज्योतिष : दशाफल (ई.सं.१३९८), - भास्वतीकरण (ई.सं. १४०७), - केरलीयशास्त्र (ई.सं. १४०३)- ज्योतिराजकर्ण (ई.सं.१४२७ ) आदि प्रमुख छन्
- कर्मकाण्ड पूजाविधिसम्बन्धी : नेपालभाषाको अभिलेख ग्रन्थहरूमध्ये सबैभन्दा बढी कर्मकाण्ड र पूजाविधिसम्बन्धी नै छन्। यिनीहरूमा दशकर्म पद्धति (इ.सं.१४९७ रा.अ.) प्रमुख रहेको छ।

- पशु चिकित्सा :-अश्व आयुर्वेद शास्त्र (इ.स.१७२९) अश्व लक्षणम् (१८०२,),अश्व वैद्यम् शास्त्र (इ.स १५९२)आदि
- वास्तुशास्त्र : वास्तुशास्त्रसम्बन्धी जति पनि पुस्तक भेटिएका छन्, सबैजसो मौलिक लेखन हुन् भने धेरै जसो ज्योतिष शास्त्रसँग सम्बन्धित रहेको छ।

माथि उल्लेखित वाङ्मय ग्रन्थहरू बाहेक कामशास्त्र, संगीतशास्त्र , धनुशास्त्र, वाद्यशास्त्र, गणित, रत्न परीक्षा आदिसम्बन्धी पनि धेरै ग्रन्थहरू फेलापरेका छन्। यसरी नेपालमा प्राचिन ग्रन्थहरूमा संस्कृति पछि सबभन्दा बढी नेपालभाषाबाट लेखिएका ग्रन्थहरू फेला परेका छन् ( वैद्य, ने.सं ११०६ :७..)

२.१.४ **साहित्य सिर्जनामा नेपालभाषा** : नेपालभाषा पहिले अभिलेख अनि वाङ्मय ग्रन्थको रचनामा प्रयोग भइसके पछि सोऱ्हौं शताब्दीमा आएर विसुद्ध साहित्य सिर्जनामा पनि प्रयोग हुन थाल्यो। इ.सं.१५०५ मा रचित ५०० पृष्ठको भागवत पुराण लाई नेपालभाषाको सबभन्दा पुरानो साहित्यिक कृति मानिन्छ। प्राचीनकालको साहित्यलाई दुई कालमा विभाजन गरी अध्ययन गर्न सकिन्छ -

क) **मल्लकालिन साहित्य (इ.सं.१५०५- १७६८)** : राजा जयस्थिति मल्लको (चौधौं शताब्दी) राज्यकालदेखि सत्रौं शताब्दीसम्मको समयावधिलाई नेपालभाषासाहित्यको स्वर्ण युग मानिन्छ। राज्यको आर्थिक समृद्धि, राजनीतिक स्थिरता, तथा साहित्य, संस्कृतिप्रति शासकहरूको तन्मयता नै नेपालभाषाे सम्मुन्नत हुनुको मूल कारण रहेको छ। यस बाहेक विद्यापति, जयदेव जस्ता महान् स्रष्टाहरूको प्रभाव नेपालमण्डलमा पनि परिसकेको थियो। यस समयमा विकास भएका साहित्यिक विधाहरू निम्न छन् -

**कथा विधा** : हालसम्मको अध्ययनले कथा नै नेपालभाषाको लिखित साहित्यमा पहिलो देखिन्छ। भागवत पुराण ( इ.सं.१५०५) देखि कथा साहित्यको शुरूवाट भएपनि १७ औ शदीमा मात्र कथा साहित्यको विकास भएको पाइन्छ। प्राचीनकालमा देखापरेका कथाहरूमा धेरै जसो धार्मिक कथा छन् भने नीतिपरक तथा लौकिक कथाहरू पनि छन्। धार्मिक कथाहरूमा – स्वस्थानी, विचित्रकर्णिकावदान नीतिपरक कथाहरूमा– तन्त्राख्यान, हितोपदेश, लौकिक कथाहरूमा –वत्तीस पुतलिका, शुकवहत्तरी, वेताल पंचविंशति आदि प्रमुख छन्। यी कथाहरू धेरै जसो अनुदित भए पनि नेपालमण्डलका सामाजिक सांस्कृतिक परिवेशलाई मनन् गरी लेखिएका छन्।

**काव्य विधा** : प्राचीन काव्य भन्नु नै विभिन्न राग तालमा लेखिएका गीतहरू हुन्। कान्तिपुरका राजा महेन्द्र मल्ल (१५६१-१५७४ शताव्दीका) लाई नेपालभाषाको पहिलो ज्ञात कवि तथा इ.सं १५७२,को पनमति जुगपति नामक गीतलाई पहिलो गीत मानिएको छ। यस वेलाका सर्जकहरूमा - राजाहरूमा प्रताप मल्ल, सिद्धिनरसिंह मल्ल, श्रीनिवास मल्ल, जगतप्रकाश मल्ल, जयप्रकाश मल्ल, रानीहरूमा- ऋद्धिलक्ष्मी, भूवनलक्ष्मी, वृद्धिलक्ष्मी तथा जनसाधारणमा जगतकेशरी, केशव उदास आदि प्रमुख छन्। धर्म, श्रृंगार, देशप्रेम यस समयका मूलभूत काव्यिक प्रवृति हुन्।

**नाटक विधा** : मल्ल कालमा नाटक साहित्यको पनि प्रशस्त विकास भएको पाइन्छ। स्वयं राजाहरू जगतप्रकाश मल्ल, सिद्धिनरसिंह मल्ल, श्रीनिवास मल्ल, भुपतीन्द्र मल्ल, रणजीत मल्ल, जयप्रकाश मल्ल आदिले थुप्रै नाटककरु लेखेका छन्। कार्तिक नाच, दशअवतार नाटक यसै समयमा रचिएका नाटकहरू हुन्। सिद्धिनरसिंह मल्लको एकादशीव्रत (इ.सं १६३३) तथा जगतप्रकाशको मूलदेवशशिदेवोपाख्यान (इ.सं. १६७०) नेपालभाषाको पहिलो एकांङ्की तथा पूर्णाङ्की नाटकहरू हुन्।

ख) उत्तर मल्लकालीन साहित्य ( इ.सं.१७६९- १८४७) मल्ल शासनको अन्त पछि नेपालभाषाको सत्ता खस नेपाली भाषा तथा नेपाल लिपिको सत्ता देवनागरी लिंपिलाई प्रचलनमा ल्याइयो। तर पनि यस समयका ज्ञात अज्ञात कविहरूले पहिलेकै परम्परामा केही स्तुति, भजन, मुक्तक तथा गीतिकथाहरू लेखेर नेपालभाषाको साहित्यिक गतिलाई निरन्तरता दिए। सुन्दरानन्द, अमृतानन्द यस समयमा देखापरेका ज्ञात कविहरू हुन्। नाटक विधामा राजेन्द्र विक्रमशाहद्धारा रचित महासत्वपाख्यान तथा अमृतानन्द बन्देबाट रचित हनुमान नाटक देखापरे भने कथा विधामा पहिले कै जस्तै जातक अवदान पुराणमा आधारित कथा ग्रन्थहरूको रचना भए।

२.२ **माध्यमिक काल (इ.सं १८४८ -१९४०)**

नेपालभाषा साहित्यको माध्यमिककाल भन्नाले जङ्गबहादुरको शासन कालदेखि वि.सं १९९७ सालको राजनैतिक काण्डसम्मको समयावधि पर्नआउँछ। यस माध्यमिककालको समयावधिलाई पनि दुई कालखण्डमा विभाजन गरी अध्ययन गर्न सकिन्छ।

२.२.१ **पूर्व पुनर्जागरणकाल ( १८४८ -१९०८)** : यस समयावधिमा पनि साहित्यको मूलधार काव्य नै रह्यो। काव्य सिर्जना गर्ने ज्ञात कविहरूमा तत्कालीन भाइभारदारहरू नै थिए। इ.सं १८४७ मा भएको भयानक कोतपर्वले तत्कालीन भाइभारदारहरूमा डर, त्रास तथा आपसी वैमनस्यता उब्जायो भने दरवारमा भएका सन्तमहन्तहरूको प्रभावले उनीहरूलाई इहलोकको भन्दा परलोकको मुक्ति मोक्षतिर आशक्त बनाए। फलतःयी भाइभारदारबाट सन्त परम्पराको काव्य रचना भए। यस्ता काव्य सिर्जना गर्नेहरूमा स्वामी अभयानन्द, हरिभक्त माथेमा, मानलाल मास्के, बखतवहादुर आदि प्रमुख छन्।

**नाटक विधामा** – इन्द्रजात्रा, गाइजात्रा आदि पर्वमा प्रहर्सन, नाटक आदि देखाउने प्रचलन रहेपनि त्यस्ता नाटकहरू लिखितरूपमा राख्ने चलन नहुँदा उक्त समयावधिमा लेखिएका कुनै पनि नाटकहरू फेलापरेका छैनन्।। कथा विधामा पुरानै आख्यान, अवदान, पुराणहरूको पुनराबृत्ति भएको पाइन्छ। यसरी साहित्य सिर्जनामा देखापरेको उदाशिनताको मूल कारण तत्कालीन राजनैतिक वस्तुस्थितिलाई नै मान्नु पर्दछ।

२.२.२ **पुनर्जागरण काल (इ.सं १९०९ -१९३९)** : यस समयावधिमा आएर नेपालभाषाले प्रत्यक्षरूपमै राज्यबाट दमन खप्नु पऱ्यो। तत्कालीन

प्रधानमन्त्री चन्द्र शम्शेरले ई.सं १९०६ मा नेपालभाषाको प्रयोग अड्डा-अदालतमा अमान्य गरिदियो भने पुस्तक लेख्ने वा प्रकाशन गर्नमा प्रतिबन्ध लगाए। यसरी एकातिर राज्यबाट नेपालभाषा साहित्यलाई निस्क्रिय तुल्याउने काम भयो भने अर्कोतिर तत्कालिन ग्रन्थहरूमा चलनचल्तिको भाषाको प्रयोग नभई पुरानै भाषा पुरानै लिपि प्रयोग हुने हुँदा तत्कालिन जनसमुदायबाट नेपालभाषा साहित्य टाढिँदै गएको थियो। तर यस्तो समयमा पनि नेपालभाषाको जागरण अभियान शुरू भयो। तत्कालिन आर्य समाज प्रचार अभियान , लाइब्रेरी पर्व, दरवार स्कूलको स्थापना जस्ता जागरणका क्रियाकलापहरूले यहाँका युवाहरूलाई निकै प्रभाव पारेका थिए भने भारतमा भारतेन्दु हरिश्चन्द्रको नेतृत्वमा भएको पुर्नजागरण अभियानले पनि यी युवाहरूमा आफ्नो मातृभूमि तथा मातृभाषाप्रति केही गर्नु पर्छ भन्ने भावना जगाएको थियो। फलतः यस्ता जागरण अभियानबाट अभिप्रेरित यी युवाहरूले मरणान्त स्थितिमा रहेको नेपालभाषालाई ब्युँताउने काम गरे। यस पुनर्जागरण अभियानको अग्रपंक्तिका महापुरूषहरू हुन् - पं. निष्ठानन्द वज्राचार्य, महाकवि सिद्धिदास अमात्य, माष्टर जगतसुन्दर मल्ल, कवि योगवीर सिं, शुक्रराज शास्त्री, धर्मादित्य धर्माचार्य आदि। पं. निष्ठानन्द वज्राचार्यले देवनागरी लिपिमा एकविंशति प्रज्ञापारमिता (इ.सं १९०९) ग्रन्थ मुद्रित रूपमा प्रकाशित गरी मुद्रण परम्पराको थालनी गरे। त्यस्तै ललितविस्तर (इ.सं १९१४)जस्ता महायानी बौद्ध ग्रन्थ अनुवाद गरी बोलिचालिको भाषामा साहित्य रच्ने परम्पराको आरम्भ गरे। कवि सिद्धिदासले विविध विधा तथा विविध विषयका ५० भन्दा वढी पुस्तकहरू लेखी नेपालभाषालाई संख्यात्मक तथा गुणात्मक रूपले समृद्ध गर्नमा सहयोग पुऱ्याए। आर्य समाजबाट प्रभावित योगवीर सिंहले सामाजिक, धार्मिक, आर्थिक, भाषिक सुधारका कविताहरू लेखी समाजलाई सजग सचेत तुल्याउने चेष्टा गरे। नेपालभाषाको पुर्नजागरणको शंखनाद गरे। माष्टर जगतसुन्दर मल्लले मातृभाषाको माध्यमबाट शिक्षाको शुभारम्भ हुनुपर्ने जिकिर मात्र नगरी, आफैले स्कूल खोली यसको प्रयोग गरेर देखाए। धर्मादित्य धर्माचार्यले नेपालभाषामा बुद्ध धर्म पत्रिका प्रकाशित गरी पत्रिका परम्पराको थालनी गरे। शुक्रराज शास्त्रीले नेपालभाषा व्याकरण (इ.सं.१९२८) लेखी नेपालभाषालाई स्तरीयता दिलाउने चेष्टा गरे।

यस पुर्नजागरण कालमा पनि सबभन्दा बढी विकास भएको विधा काव्य हो। सत्यसती, सज्जन हृदयाभरण, सिद्धिरामायण, योगसुधा, थुलिंचा यस समयावधिमा रचिएका काव्यहरू हुन। गद्य विधातर्फ ललितविस्तर , इसपं दयकूगु बाखं, नेपालभाषा व्याकरण, नेपालभाषा वर्णमाला रहेको छ। उपदेश नीति यस माध्यमिककालको मूलभूत प्रवृति रहेको छ।

## २.३ आधुनिक काल ( इ.सं १९४०)

१९४० को दशक पछि नेपालभाषा साहित्यमा स्पष्ट रूपले नयाँ नयाँ आयामहरू देखा परेको, नयाँ नयाँ साहित्यिक विधाहरू भित्रिएको हुनाले इ.सं.१९४० पछिको समयलाई नेपालभाषा साहित्यमा आधुनिक काल मानिन्छ। यस समयमा आएर नेपालभाषाको काव्य, कथा, नाटक आदिमा आधुनिक प्रभाव भित्रियो भने उपन्यास, निबन्ध, समालोचना जस्ता नयाँ विधाहरू पनि देखापर्न थाले। यस आधुनिक कालको साहित्यलाई पनि निम्न चरणहरूमा विभाजन गरी अध्ययन गर्न सकिन्छ।

२.३.१ **संक्रमणकाल ( इ.सं १९४०)** : एकातिर राणा शासकहरूको दमन, शोषण तीव्र हुँदै गएको थियो भने अर्कातिर तत्कालीन युवाहरूले राणाविरोधी गतिविधिहरू संचालन गर्न नेपाल नागरिक समिति, प्रजापरिषद् जस्ता पार्टीहरू भूमिगत रूपमा खोलेका थिए । फत्तेबहादुर सिंहले मातृभाषामाथि भएको शोषण दमनको पर्दाफास गर्दै भाषा-सेवामा समर्पित हुन आह्वान गरी भूमिका लेखिएको नेपाली विहार जस्ता कविता संग्रह प्रकाशित गरे। यसै संग्रहमा कवि सिद्धिचरणका वर्षा, गंगु खुसि जस्ता क्रान्तिकारी चेत भएका कविताहरू छापिए। यस समयको मूलभूत साहित्यिक प्रवृति छाँयावाद स्वच्छन्दबाद रह्यो।

२.३.२ **जेल काल तथा निर्वासन काल** : ( इ.सं १९४१-१९४५) : तत्कालीन राणा शासकहरूले आफ्नो शासन सत्ता बचाउन, राजनीतिमा संलग्न युवाहरूलाई मात्र नभई शैक्षिक, साहित्यिक गतिविधिमा संलग्न सवै युवाहरूलाई जेल चलान गरे। यसै क्रममा कवि चित्तधर् हृदय लगायत नेपाली विहार पुस्तकका सम्पादक तथा उक्त संग्रहमा कविता छापिएका कविहरू जेलमा परे। जेलमा परेका यी सर्जकहरूले आफुहरूले मात्र लेख्ने गरेनन्। राजनैतिक कारणले जेलमा परेका युवाहरूलाई समेत साहित्यतिर उन्मुख गराए। फलतः कारागार नेपालभाषाको निमित्त साहित्य साधनागार बन्यो । जेलकाल नेपालभाषा काव्यको अत्यन्त उर्वरा काल मानिन्छ। छाँयावाद, स्वच्छन्दबाद यस समयको मूलभूत काव्य प्रवृत्ति रहेको छ।

एकातिर साहित्यिक गतिविधिमा लागेका सर्जकहरूलाई जेल यातना दिइयो भने अर्कोतिर किंदोल विहारमा आफ्नो मातृभाषाबाट धर्मदेशना गर्ने ८ जना भिक्षुहरूलाई इ.सं १९४४ मा देश निकाला गरिदियो। यी निष्काशित भिक्षुहरूको सहयोगको निमित्त भारतको सारनाथमा धर्मोदय सभा (नेसं १०६५)को स्थापना भयो। यही संस्था मार्फत यी भिक्षुहरूले धार्मिक पुस्तक लेख्नुका साथै धर्मोदय पत्रिका प्रकाशित गरी नेपालभाषाको आधुनिक साहित्य निमार्णमा ठूलो सहयोग पुऱ्याए।

२.३.३ **पूर्व प्रजातन्त्र काल ( इ.सं.१९४६ –१९५०)** : यस कालखण्डको सबभन्दा उपलव्धी भनेको जेलमा रचिएका कृतिहरूको प्रकाशन तथा नयाँ नयाँ साहित्यिक विधाहरूको सुत्रपात हो। चित्तधर हृदयको सुगत सौरभ, धर्मरत्न यमिको अर्हतनन्द जस्ता महाकाव्यको प्रकाशन भयो। त्यस्तै आधुनिक कथा ९ःयमभचल कजयचत कतयचथ० को सुत्रपात चित्तधर 'हृदय' को खुपु बाखंचा पुस्तकबाट भयो। आधुनिक एकाङ्की नाटकको शुरूवात पनि चित्तधर हृदयको शाक्यानीबाट भयो। त्यस्तै समालोचना साहित्यको शुभारम्भ पनि रत्नध्वज जोशीको धर्मोदयया कहानी नामक

लेखबाट भयो भने उनकै च्वयूगु छायू जस्ता बिचार प्रधान निबन्धबाट नेपालभाषामा पनि आधुनिक निबन्धको थालनी भयो।

२.३.४.**प्रजातन्त्रकाल ( इ.सं.१९५१ –१९६४)** : २००७ सालको प्रजातन्त्रले ल्याएको खुल्ला वातावरणले एकातिर लेखकहरूमा जाँगर र उत्साह ल्यायो भने अर्कोतिर अरू देशका साहित्यसित पनि परिचित हुने मौका दिलायो। भाषा साहित्यको उत्थानको निमित्त च्वसापासा, नेपालभाषा परिषद्, साहित्य मन्दिर आदि जस्ता संघ संस्थाहरू स्थापना भए भने थौंकन्हे, नेपाल, पासा आदि जस्ता पत्र पत्रिका प्रकाशनमा आए। फलतः साहित्यमा विविधता र व्यापकता देखियो। काव्य विधामा स्वच्छन्दवादी धाराको स्पष्टरूपले विकास भयो। यस धाराको नेतृत्व गर्ने काम कवि सिद्धिचरणले गरे। हरिकृष्ण श्रेष्ठ, नारायणदेवी, दुर्गालाल, चित्तरञ्जन नेपाली जस्ता स्रष्टाहरूले यसलाई आत्मसात गरे। स्वच्छन्दवादी धाराको अतिरिक्त वर्हिमुखी प्रवृति समष्टिगत भावना उद्बोधन गर्ने केदारमान 'व्यथित'को छ्वास' रेवतिरमणानन्दको मलख जस्ता काव्यहरू देखापर्न थाले। त्यस्तै धुस्वांको मिसा (इ.सं. १९५४) उपन्यासको प्रकाशनले नेपालभाषामा पनि उपन्यास विधाको पदार्पण भयो। यसै दशकमा नाटक क्षेत्रमा हेमलाल जोशी, सुदर्शन श्रामणेर, सत्यमोहन जोशीहरूले ऐतिहासिक नाटकको थालनी गरे भने ईश्वरानन्द श्रेष्ठाचार्यले इब्सनवादी नाटक लेखी नेपालभाषामा पनि समस्यामूलक नाटकको आरम्भ गरे। गिरिजाप्रसाद जोशी, बासुशशी यस विधामा कलम चलाउने अरू नाटककारहरू हुन्। निबन्ध विधामा रत्नध्वजका विषयपरक निबन्धका पुस्तकहरू बाहेक प्रेमबहादुरका न्हूपुखू जस्ता आत्मपरक निवन्ध संग्रह पनि देखा परे। मोतिलक्ष्मी उपासिका, ठाकुरलाल मानन्धर, तेजेश्वर बाबु ग्वंगः, फणिन्द्ररत्न बज्राचार्य, तिलकप्रकाश कायष्ठ आदि यस समयका अरू प्रमुख निबन्धकारहरू हुन्। समालोचना विधामा पनि माधवलाल कर्माचार्य, कमलप्रकाश मल्ल, माणिकलाल श्रेष्ठ जस्ता स्रष्टाहरूले पाश्चात्य समीक्षा पद्धति नेपालभाषा साहित्यमा भित्राउने काम गरे। कथा विधामा पूर्ण पथिक, पूर्णदास श्रेष्ठ, माधवलाल कर्माचार्य, प्रकाशकुमारी, तीर्थलाल नघःभनि जस्ता कथाकारहरूका आर्दशवादी, सामाजिक, मनोवैज्ञानिक यर्थाथवादका कथाहरू देखापर्न थाले।

२.३.५ **पञ्चायत काल ( इ.सं.१९६५–१९९०)** : देशमा पञ्चायती व्यवस्था लागु भएपछि राज्यले एक देश एक भाषाको नीति अपनाई रेडियो नेपालबाट प्रशारण हुँदै आएको नेपालभाषाको समाचार, जीवन दबू जस्ता कार्यक्रम हटाइदियो। पुस्तक प्रकाशन तथा साहित्य सम्मेलन जस्ता कार्यक्रमलाई रोक लगाइयो। पञ्चायती शासनको यस्ता दमनको विरोधमा नेवार समुदायले टोलटोलमा साहित्य सम्मेलन गरी भाषिक आन्दोलन शुरू गरे। यस्ता साहित्य सम्मेलनले नयाँ लेखकहरू जन्मायो। पुरानाहरूलाई परिमार्जित हुने मौका दियो। फलत नेपालभाषाको साहित्य Protest Literature को रूपमा झन अगाडि बढ्न थाल्यो। आक्रोश र व्यङ्ग्य नै तत्कालीन साहित्यको मूलभूत प्रवृति बन्न पुग्यो। आधुनिक कविता तथा प्रगतिवादी प्रवाह यसै समयमा नेपालभाषामा पनि भित्रियो। पूर्ण वैद्य, आनन्द जोशी, बुद्ध सायमि, योगेन्द्र प्रधान, श्यामसुन्दर सैजु, रमेश मधु, सत्यभामा, नातिवज्र, नर्मदेश्वर प्रधान, भगतदास श्रेष्ठ, त्रिरत्न शाक्य आदि यस प्रवृत्तिका कविहरू हुन। कथा विधामा मथुराकृष्ण सायूमि, हितकरवीरसिंह, हरिकृष्ण रञ्जितकार, राजा शाक्य, सुवर्ण केशरी, श्यामदास प्रजापति, भूषणप्रसाद श्रेष्ठ जस्ता नयाँ कथाकारहरू देखा पर्न थाले। त्यस्तै सामाजिक कुरीति, सुधारका सन्देश दिने कथा मात्र नभई मनोवैज्ञानिक चेतले प्रभावित कथाहरू पनि देखिन थाले। त्यस्तै लघुकथा, बिम्वात्मक कथाहरू पनि प्रचलनमा आए। उपन्यास विधामा पनि धुस्वां सायूमिका साथै ईश्वरानन्द श्रेष्ठाचार्य, जगदीश चित्रकार, रत्नबहादुर सायमि, गिरिजाप्रसाद जोशी, चिनियालाल वज्राचार्य जस्ता स्रष्टाहरू अग्रसर भए। प्रवृत्तिगत रूपले यस समयमा फ्रायडवाद, प्रगतिवाद मात्र नभई विसंगतिवाद, अस्तित्ववाद दर्शनले प्रभावित उपन्यासहरू पनि देखापर्न थाले। नाटक विधामा पनि दुर्गालाल श्रेष्ठ, दिनेश भुजु, राजभाइ जकःमि, निबन्ध विधामा पद्मरत्न, पूर्णबहादुर, मंगलप्रसाद स्यस्यः, रमेशकाजी स्थापित जस्ता प्रगतिवादी स्रष्टाहरू देखा परे भने बालगोपाल श्रेष्ठ, मल्ल.के.सुन्दर, जुही सुवाल, सौरभ शाक्य आदि यस विधामा हात बढाउने अरू निबन्धकारहरू हुन्। यस समयमा विकास भएको एक महत्वपूर्ण विधा हास्य व्यङ्ग्य पनि हो । सूर्यबहादुर पिवाः, रामशेखर, पद्मरत्न, श्रीकृष्ण अणु, ध्रुव नारायण कायष्ठ, हृदयप्रसाद मिश्र, केशरत्न शाक्य आदि यस प्रवृत्तिका सर्जकहरू हुन्।

२.३.६ **बहुदल व्यवस्था पछि (इ.सं.१९९१ देखि हालसम्म)** : देशमा आएको दुई ठूलो राजनैतिक परिवर्तन २०४५/४६को बहुदलीय व्यवस्था तथा २०६२/६३ को जनआन्दोलन पश्चात पनि पञ्चायत कालमा लादेको एक देश, एक भाषा नीतिमा कुनै परिवर्तन आएन। फलत यस भाषामा पनि धेरै भाषिक विचलन देखापर्न थाल्यो। २००७ सालको प्रजातन्त्र पश्चात नेवार समुदायमा आफ्नो भाषा साहित्य विकासको निमित्त जुन उत्साह जोश तत्कालीन युवाहरूमा उब्जिएको थियो त्यस्तो जोश उत्साह यस राजनैतिक परिवर्तनहरूले उब्जाउन सकेनन्। बरू साइबर संस्कृतिको विकास तथा भूमण्डलिकरणको प्रभावले नेपालभाषा साहित्यको घेरालाई भने पहिले भन्दा वृहत र व्यापक बनाई दियो। यही अनुरूप उत्तरी आधुनिकवादको प्रभाव पनि नेपालभाषा साहित्यमा यथेष्ठ देखापर्न थाले। फलत नेपालभाषा साहित्य निश्चित समाजको निश्चित समस्यामा मात्र केन्द्रित नरही आजको नयाँ प्रविधि तथा परिवेशले ल्याएका समस्याहरू जस्तै - विदेशिने नेपालीहरूको रेमिटायन्सको सट्टा कफिन भित्रिने व्यथा, अनियन्त्रि बसोबासको कारण यहाँका आदिवासीहरू आफ्नै आदिभूमिबाट विस्थापित हुनुपर्ने समस्या, आफ्नो सांस्कृतिक परम्पराबाट विचलन हुनुपर्ने अप्रवासीहरूको ९म्बकउयचष्ल० पीडा, शहरीकरणको अनियन्त्रित बसोबासले काठमाडौं शहर कंक्रिटको जंगलमा परिणत हुने त्रास आदि मात्र नभई टेष्टट्यूव बेबी, सरोगेटेद मदर, नीलहिराका जस्ता नयाँ नयाँ विषय तथा समस्यालाई लिएर लेखिएका थुप्रै कविता, कथा निबन्धहरू देखापर्न थाले। त्यस्तै निबन्ध, कथा लेखन आदिमा पनि अन्तर विधात्मक सिद्धान्तको प्रयोग देखापर्न थाल्यो भने उपन्यासमा बहु नायक समावेश गरेर पनि उपन्यास लेख्न सकिन्छ भन्ने प्रयोग केदार सितुले स्वम्हम मनू उपन्यास लेखी देखाइदिए। मल्ल के सुन्दरले व लँपु थ्व

पलाः नामक उपन्यास लेखी बौद्ध दर्शन तथा मार्क्सवादी दर्शन जस्ता दुइ विपरित ध्रुर्वीय दर्शनलाई पनि समन्वय गरेर देखाउने चेष्ठा गरे। एक भाषा, एक जाति, एक संस्कृति, एक धर्मले नकिच्नु सबै जाति, सबै भाषा, सबै संस्कृतिलाई उठ्न दिनू भन्ने बहुलबादी समावेशी तथा पहिचानको स्वर पनि प्रत्येक जस्तै स्रष्टाहरूको रचनामा घन्किन थाल्यो। यस्ता स्वरहरू विशेषत २०६२ सालको राजनैतिक परिवर्तन पछि अझ बुलन्द भएको छ भने विशेषतः काव्यमा उठ्ने गरेका छन्। श्रीराम श्रेष्ठ, सुधीर ख्वबि, नवीन चित्रकार, सुदन खुसः, नारद वज्राचार्य, सुरेश किरण, शाक्य सुरेन, राजभाइ जकःमि, प्रतिसरा सायूमि, माधब मूल, पुष्पराज राजकर्णिकार, केशवमान शाक्य, वसन्त मर्हजन, रजनी मिला, ईश्वरी मैँया, रामेश्वर जलन, अगिब बनेपाली आदि यस्ता स्वरका हिमायती कविहरू हुन्। निबन्ध बिधामा यस समयमा आएर विशेष नियात्रासम्बन्धी निबन्धहरू नै वढी देखिन थाले। आर मानन्धर, लक्ष्मण राजवंशी, विमलप्रभा, पुष्पराज, घनश्याम राजकर्णिकार आदि यस प्रवत्तिका निबन्धकारहरू हुन्। पहिलेभन्दा यस समयमा नारी स्रष्टाहरू पनि बढी देखापर्न थाले । उनीहरूले पनि आफ्नो कथा, कविता मार्फत् पुरूषको दासता अधिनायकताको विरोधमा नारी मुक्ति र नारी अस्मिता नारी सशक्तिकरणको निमित्त स्वर बुलन्द पारेका छन्। त्यस्तै २०७२साल वैशाख १२ गतेको महाभुकम्प तथा त्यसको केही महिना पछि भारतबाट भएको नाकाबन्दीले नेपाली जनतामा जुन त्रासदपूर्ण विपद ल्याएको थियो त्यस्ता अभिघातलाई बोध गराउने थुप्रै कविता, कथा, निबन्धहरू नेपालभाषामा पनि सिर्जना भए। बाल साहित्यको क्षेत्रमा पनि शान्तदास मानन्धर, राजभाइ जकःमि, मिना वज्राचार्य, जलेश्वरी श्रेष्ठजस्ता स्रष्टाहरूको अग्रसरता देखिए। त्यस्तै यही समयमा आएर नेपालभाषा साहित्यको इतिहास लेख्ने प्रयास प्रेमशान्ति तुलाधर, नर्मदेश्वर प्रधान, इन्द्र माली जस्ता स्रष्टाहरूबाट भए । उपन्यास नाटक विधामा पुरूष लेखकहरूको मात्र आधिपत्य रहेकोमा शशिकला मानन्धर, अपर्णा प्रधान जस्ता नारी सर्जकहरूले महिलाको उपस्थिति पनि सशक्त रूपले देखाएका छन। त्यस्तै नाटक लेखनमा पनि प्रकाशकुमारी प्रधानाङ, शशिकला मानन्धरहरूले महिलाहरूको अभावपूर्ति गरिदिए भने ज्ञानकाजि मानन्धरले प्राचिन आख्यान पुराणलाई नाटकको रूपमा उजागर गर्ने काम गरे। काव्य विधामा गजल, हाइकु जस्ता विधाहरूको संख्यात्मक तथा गुणात्मक रूपले पनि वृद्धि भएका छन्। यस समयावधिमा लघु कथा, लघु उपन्यास लेखनमा स्रष्टाहरूको बढी ध्यान गएको पाइन्छ। मथुराकृष्ण सायूमिको चार भागसम्म प्रकाशित माकुगु विष लघु उपन्यास तथा गोविन्द श्रेष्ठ, विमल ताम्रकार, कृष्णभक्त बोडे आदिका लघु कथाहरू यसका उदाहरण हुन्।

यसरी आधुनिंककालमा आएर नेपालभाषामा नयाँ नयाँ प्रयोगहरू भित्रिएका छन् भने पहिलेको भन्दा धेरै नयाँ नयाँ साहित्यिक विधा तथा विषयहरूले सम्पन्न बनेको छ। तर यस भाषा साहित्यमा एउटै विधामा प्रतिवद्ध भइ कलम चलाउने भन्दा सबै विधामा हात बढाउने स्रष्टाहरू नै बढी छन्। सायद यो उनीहरूको आफ्नो मातृभाषाप्रतिको भावनात्मक अनुराग वा समर्पण हो कि। अस्तु

<u>सन्दर्भ सूची</u>


| | |
|---|---|
| आचार्य, बाबुराम, | नेसं १०८९, नेपाः नेवाः व नेवाः भाय्, सितु, दँ ६:२३। |
| कंसाकार, तेजरत्न | नेसं ,११०२,नेपालभाषा व भाषाविज्ञान। यें : देगः म्हिचासफू। |
| जोशी, हरिराम, | विसं २०३०, नेपालको प्राचीन अभिलेख। काठमाडौ : नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान, पृ ८९। |
| तुलाधर, प्रेमशान्ति | नेसं ११२०, नेपालभाषा साहित्यया इतिहास। यें : नेपालभाषा एकेदमि। |
| प्रधान, नर्मदेश्वर | नेसं १११८, नेपालभाषा साहित्यया इतिहास बारे। यल : साहित्य मूलुखा । |
| वैद्य, जनकलाल | नेसं ११०६, नेवारभाषाया काव्य सृजना प्रवृति। यल : जनकलाल वैद्य। |
| मल्ल, के.सुन्दर | नेसं ११११ सिल्लागा ३०-१, नेवाः जातिया परिचय, नेवाः जाति व भाषा विषयक तःमुँज्या, यें: राष्ट्रिय सभागृह। |
| हृदय, चित्तधर | नेसं ११०२, झीगु साहित्य, स्वकःखुसी यें: नेवारभाषा परिषद। |
| श्रेष्ठ, माणिकलाल, | विसं २०३८, नेवार भाषासम्बन्धी केही तथ्य, अक्षलोक १:१,। |
| ज्ञवाली, सूर्यविक्रम | विसं २०१९, नेपाल उपत्यकाको मध्यकालीन इतिहास, रोयल नेपाल एकेडेमी, काठमाडौं। |
| Malla, Kamal Prakash | 1981A.D., Classical Newari Ligerature A Sketeh, kathmandu: Nepal Study center |
| Nepali, Gopal Singh | 1965 A.D The Newars, Bombay : United Asaia Publication |
| Regmi, D.R, | 1960 A.D, Ancient Nepal (Calcutta:Mukhopadhaya_ page-16Wright,Danil, 1966A.d., |

# नेपालभाषा साहित्य नखः

नेपालभाषा (नेवार भाषा) को साहित्यिक इतिहास मै पहिलो पटक भएको नेपालभाषा साहित्य नखः (महोत्सव) आज शनिबार भयो। साहित्य सम्बन्धी विभिन्न कार्यक्रमहरू संचालन गरी उक्त महोत्सव गरिएको थियो।

पाटनको ऐतिहासिक दरबार भित्र रहेको केशवनारायण चोकमा आयोजित उक्त महोत्सवको उद्घाटन वाङ्मय शताब्दी पुरुष सत्यमोहन जोशीले गर्नुभएको थियो। सोही कार्यक्रममा श्री जोशी लगायत संगीत तथा नाट्य प्रज्ञा प्रतिष्ठानका कुलपति सरुभक्त श्रेष्ठले उपन्यासकार मल्ल के. सुन्दरको नयाँ उपन्यास 'द पोष्टर' विमोचन गर्नुभयो भने जोशी र नेपालभाषा एकेडेमीका चान्सलर चित्तरञ्जन नेपालीले कवि बसन्त चौधरीको नेपालभाषामा अनुदित कविता संग्रह 'वसन्त' विमोचन गर्नुभयो।

महोत्सवमा प्रा. प्रेमशान्ति तुलाधरले नेपालभाषा साहित्यको इतिहास बारे प्रवचन दिनुभयो।

'भोलिको नेपालभाषा साहित्य' विषयमा भएको अन्तर्क्रियात्मक कार्यक्रममा साहित्यकार भूषणप्रसाद श्रेष्ठ, सुलोचना मानन्धर, ध्रुव मधिकर्मी र राजेन मानन्धर सहभागी दुनुभएको थियो भने उक्त कार्यक्रममा कवि सुरेश किरणले सहजीकरण गर्नुभएको थियो। त्यस्तै अर्को सत्र 'नेपाली भाषामा साहित्य सिर्जना गरिरहनु भएको नेवार साहित्यकार' विषयमा छलफल हुनेछ। कवि नवीन चित्रकारले सञ्चालन गर्नुभएको उक्त सत्रमा सरुभक्त श्रेष्ठ, स्नेह सायूमि, श्रीओम श्रेष्ठ र जलेश्वरी श्रेष्ठको सहभागिता थियो। महोत्सवमा नेपालभाषाका चर्चित २२ जना साहित्यकारहरूले रचना पाठ पनि गर्नुभएको थियो।

नेपालभाषा टाइम्स दैनिक र सन्ध्या टाइम्स सञ्चार सहकारीको आयोजना भएको महोत्सवमा नेपालभाषाका पुस्तक प्रदशर्नीका साथै विभिन्न नेवाः परिकारको स्टल पनि राखिएको थियो।